गृह मन्त्रालय

**प्रहरी प्रधान कार्यालय**

**(मानवश्रोत एवं प्रशासन विभाग, भर्ना छनौट महाशाखा)**

नक्साल, काठमाण्डौ ।

# म्यादी प्रहरी भर्ना सम्बन्धी सूचना !!!

स्थानीय तह निर्वाचन २०७९ को लागि **म्यादी प्रहरी** भर्ना गर्नुपर्ने भएकोले देहाय बमोजिमको योग्यता पुगेका नेपाली नागरिकहरुबाट स्वयम् उपस्थित भई दरखास्त आव्हान गरिन्छ ।

**१. पद :-** म्यादी प्रहरी

**२. माग पद संख्या :-** १,००,००० (एक लाख) जना ।

**३. दरखास्त दिने मिति :-** २०७८/१२/०६ गतेदेखि २०७८/१२/११ गतेसम्म, समय विहान १०:०० बजेदेखि १७:०० बजेसम्म (सार्वजनिक विदाको दिन बाहेक) ।

**४. दरखास्त फाराम पाइने र बुझाउने स्थानहरू :-** महानगरीय प्रहरी परिसर (**काठमाण्डौ, ललितपुर, भक्तपुर**) र **जिल्ला प्रहरी कार्यालय (सबै)** ।

**५. आवश्यक न्यूनतम योग्यता र प्राथमिकता :-**

| उमेर हद | आवश्यक न्यूनतम योग्यता | म्यादी प्रहरी भर्नाको लागि प्राथमिकता |
|---|---|---|
| दरखास्त फाराम दर्ता गर्ने अन्तिम मितिसम्म १८ वर्ष पुरा भई ५४ वर्ष ननाघेको । | १. नेपाली नागरिक हुनु पर्ने,<br>२. कुनै नैतिक पतन देखिने फौजदारी अभियोगमा कसुरदार नठहरिएको,<br>३. कुनै राजनैतिक दलको सदस्य नरहेको,<br>४. शारीरिक तथा मानसिक रुपले तन्दुरुस्त रहेको,<br>५. साधारण लेखपढ गर्न जान्ने,<br>६. प्रहरी नियमावली, २०७१ (संशोधन सहित) को अनुसूची-३ प्रकरण (३) को (छ) र (ज) मा उल्लेख भए बमोजिम हुनु पर्नेछ । | १. सुरक्षा निकाय (नेपाली सेना, नेपाल प्रहरी र सशस्त्र प्रहरी बल, नेपाल) मा २०७८ श्रावण १ गतेदेखि विभिन्न पदमा भर्नाको लागि आवेदन दिई शारीरिक तन्दुरूस्ती र स्वास्थ्य परीक्षणमा उत्तीर्ण भई प्रवेश पत्रको प्रतिलिपी पेश गर्ने व्यक्तिहरु,<br>२. नेपाली सेना, नेपाल प्रहरी र सशस्त्र प्रहरी बल, नेपालमा कार्यरत रही निवृत्तीभरण वा उपदान प्राप्त पूर्व सुरक्षाकर्मीहरु तथा पूर्व वन रक्षकहरू,<br>३. विदेशी मित्र राष्ट्रका सुरक्षा निकायहरुमा काम गरी सेवा निवृत्त नेपाली नागरिक,<br>४. विगतका निर्वाचनहरूमा म्यादी प्रहरीको रुपमा भर्ना भई सन्तोषजनक कार्य गरेका व्यक्तिहरू । |

**६. सम्पर्क मिति र स्थान :-**

- मिति: २०७८/१२/१३ गते ।
- स्थान: आवेदन दर्ता गराएका सम्बन्धित प्रहरी कार्यालयहरू ।
- समय: विहान १०:०० बजे ।

**७. छनौट सम्बन्धी :-**

- छनौट प्रारम्भ हुने मिति: २०७८/१२/१५ गतेदेखि ।
- अन्तिम नतिजा प्रकाशन मिति: २०७८/१२/२२ गते ।
- प्रशिक्षण शुरु हुने मिति: २०७८/१२/२८ गतेदेखि ।

**८. म्यादी प्रहरीको कार्य अवधि :-**

- निर्वाचनमा खटिने म्यादी प्रहरीको कार्य अवधि बढीमा ४० दिन सम्मको हुनेछ ।

**९. सेवा तथा सुविधा :-**

- म्यादी प्रहरीका लागि नेपाल प्रहरीको जवान सरह (आधारभूत तलब: मासिक रू.२२,६८०।-) बढीमा ४० दिन सम्मको लागि व्यक्तिगत बैंक खातामा रकम जम्मा गरिदिने गरी जम्मा तलब रू.३०,२४०।-, खाद्यान्न वापत प्रति व्यक्ति एकमुष्ठ रू.७,२००।- र पोशाक तथा अन्य सामान खरीद गर्ने गरी प्रति व्यक्ति रु.६,०००।- का दरले उपलब्ध गराईने छ ।
- निर्वाचनको क्रममा खटिने म्यादी प्रहरीहरूलाई खटिएको ठाउँमा आउन र जाने तयारी स्वरूप प्रति म्यादी प्रहरी एक पटकको लागि रू.१,०००।- का दरले तयारी खर्च उपलब्ध गराईने छ ।
- बीमा लगायतका अन्य सुविधा नेपाल सरकारले तोके बमोजिम हुनेछ ।

**प्रहरी प्रधान कार्यालय**
मानवश्रोत एवं प्रशासन विभाग
भर्ना छनौट महाशाखा
नक्साल, काठमाण्डौ ।